

नेपाल सरकार

# गृह मन्त्रालय

(शान्ति सुरक्षा तथा अपराध नियन्त्रण शाखा)



सिंहदरबार
काठमाडौं, नेपाल

पत्र संख्या - शा.सु. ०७७/०७८-१६
प्राप्त पत्र संख्या र मिति:-
च.नं.:- २८३७

मिति:२०७७/१२/०८

विषयः जानकारी सम्बन्धमा ।

श्री रुक्सना कपालीज्यू,
क्वेर युथ ग्रुप, ललितपुर मनपा १६,
ललितपुर ।

उपरोक्त सम्बन्धमा तपाईले च.नं. ०२६/७७/७८ मिति २०७६/११/१९ मा ईमेल मार्फत माग गर्नुभएको निवेदनका सम्बन्धमा जानकारी उपलब्ध गराइदिन कानून तथा फैसला कार्यान्वयन शाखामा पठाइएकोमा निवेदनसँग सम्बन्धित विषय नेपालको संबिधानको धारा १२८ को उपधारा (२) मा संबिधान र कानूनको व्याख्या गर्ने अन्तिम अधिकार सर्वोच्च अदालतलाई हुनेछ भन्ने व्यबस्था रहेको भनी लेखी आएकोले सोही ब्यहोरा जानकारीको लागि अनुरोध छ ।

Regd No. दर्ता नं ००५/७७/७८
Date मिति २०७७/१२/०८
P.N. पत्र १

(सुमकान्त आचार्य)
उप सचिव/सूचना अधिकारी



ཀྭ་ཡེར་ཡུཐ་གྲུཔ་ क्वयेर युथ ग्रुप क्वयेर युथ ग्रुप

Queer Youth Group

दर्ता नं : २४४९३५/०७७/०७८

स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रुपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

Ref. No. चलानी : ०२६/७७/७८

Date मिति : २०७७/११/६

PN पत्र : १

**नेपाल संवत् ११४१ चिल्ला २**

**२०७७ फागुन ६ गते**

श्री सूचना अधिकारीज्यू,

गृह मन्त्रालय,

सिंहदरबार, यैँ (काठमाडौँ)।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ भन्ने बारे।**

महोदय,

उपरोक्त सम्बन्धमा निम्न तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना यस संस्थाको अध्ययन प्रयोजनको लागि आवश्यक परेको जानकारी गराउँदै नेपालको संविधानको धारा २७ तथा सूचनाको हक सम्बन्धि ऐन, २०६४ को दफा ३ र ७ अनुसार ती सूचना तथा जानकारीको प्रमाणित प्रतिलिपि उपलब्ध गराई दिनुहुन यो निवेदन गर्दछौँ।

<u>**तपसिल**</u>

मुलुकी अपराध संहिता २०७४ को परिच्छेद १८ करणी सम्बन्धी कसूर अन्तर्गत दफा २२६ मा अप्राकृतिक मैथुन गर्न नहुने उल्लेख गरिएको छ। तर उक्त ऐनमा केलाई 'अप्राकृतिक मैथुन' भनिने, अप्राकृतिक मैथुन भन्नाले के हो वा यसको परिभाषा के हो भनि व्याख्या गरिएको छैन।

१) यस सन्दर्भमा नेपालमा 'अप्राकृतिक मैथुन'को कुनै आधिकारिक परिभाषा छ वा छैन ? यदि छ भने 'अप्राकृतिक मैथुन'को आधिकारिक परिभाषा के हो ? छैन भने यसको परिभाषा निर्धारण गर्ने अधिकार कसलाई छ ?



रुक्शना कपाली,

कार्यकारी निर्देशक, क्वयेर युथ ग्रुप

ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९९

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

http://fb.com/QYGnepal/

qygnepal

QueerYouthGroup